# गैरसरकारी विधेयकको नमूना

# नेपाल विवाह बिल, २०११

प्रचलित वैवाहिक व्यवस्थाका दोषहरू हटाइ युगसुहाउँदो एक नयाँ न्यायोचित वैवाहिक व्यवस्था र तत्सम्बन्धी नारी–अधिकारको व्यवस्थापनको निम्ति पेश गरिएको बिल ।

१. सल्लाहकार सभाका सल्लाहले श्री ५ महाराजाधिराजबाट देहाय बमोजिमको ऐन जारी गरिबक्सिएको छः

(१) यस ऐनको नाम 'नेपाल विवाह ऐन, संवत् २०११' रहेको छ ।

(२) यो ऐन पास भएका मितिदेखि लागू हुनेछ ।

(३) यो ऐन नेपाल देशभरमा लागू हुनेछ ।

२. **परिभाषाः** विषय वा प्रसंगले अर्को अर्थ नलागेमा यस ऐनमा देहायका शब्द वा शब्दहरूको अर्थ देहायबमोजिम हुनेछः–

(१) बहुविवाह– पतिले पत्नी छँदाछँदै अर्की स्त्रीसित विवाह गर्नु र पत्नीले पति छँदाछँदै अर्को पुरूषसित विवाह गर्नु बहुविवाह हो ।

(२) बाल–विवाह– यसले १८ वर्ष नपुगेको कन्याको विवाह एवं २१ वर्ष नपुगेको केटोको विवाहलाई जनाउँदछ ।

(३) अनमेल विवाह– यसले उमेर नमिलाई गरेको विवाहलाई जनाउँदछ ।

(४) विधवा–विवाह र विधुर–विवाह– पति मरेपछि अर्को विवाह गर्नु विधवा–विवाह हो र पत्नी मरेपछि अर्को विवाह गर्नु विधुर–विवाह हो।

(५) अवैध–विवाह–विवाह–कालमा कूट–पीटका ऐनमा लेखिएको ठूलो अङ्ग–भङ्ग भएका स्त्री पुरूषसित वा गर्भिणीसित कुनै किसिमले झुक्याई, ढाँटी वा जबर्दस्ती गरेको विवाह अवैध विवाह हो ।

३. **बहुविवाह–निषेध र सजायः** (१) अबउपरान्त बहुविवाह गर्न हुँदेन । यस्तो विवाहलाई विच्छेदित गरी विवाह गर्नेलाई एक वर्ष कैद नै हुन्छ । विवाह गराउने पुरोहित र अरू सहायकहरूलाई रु.२००। दुई सयका दरले दण्ड हुन्छ ।

**बालविवाह–निषेध र सजाय** –(२) अबउपरान्त बाल–विवाह गर्न हुँदैन । यस्तो विवाहलाई विच्छेदित गरी सो गर्ने गराउनेलाई तीन महिनादेखि एक वर्षसम्म कैद हुन्छ । पुरोहित र अरू सहायकहरूलाई जनही रु. २००। दुई सय दण्ड हुन्छ ।

**अनमेल–विवाह–निषेध र सजाय–** (३) अबउपरान्त अनमेल विवाह गर्नु हुँदैन । अनमेल विवाह गर्ने गराउनेलाई सो विवाह विच्छेदित गरी तीन महिनादेखि दुई वर्षसम्म अवस्था हेरी कैद नै हुन्छ । पुरोहित र अरू सहायकहरूलाई रु. २००। दुई सयदेखि ५००। पाँचसयसम्म जनही दण्ड हुन्छ । वर र वधूको उमेरमा ७ वर्षभन्दा बढीको फरक हुनु हुँदैन ।

**अपवाद–** उमेर नपुगेकाहरूका हकमा माथि दफा–दफामा लेखिएका कैद र सजाय गर्नु पर्दैन, केवल विवाह विच्छेद गरी छोडिदिए हुन्छ ।

**विधवा–विवाह र विधुर–विवाह गर्न हुने अवस्था** (४) **:** निम्नलिखित शर्त पुरा भएमा अबउपरान्त विधवा– विवाह वा विधुर विवाह गर्न हुन्छ **:–**

(क) विधवा ३५ पैँतीस वर्ष नाघेकी र सन्तान भएकी हुनु हुँदैन ।

(ख) विधुर ४५ वर्ष नाघेको र सन्तान भएको नहोस् ।

अपवाद– सन्तान भएकाले विवाह गरेमा विवाह गर्नेलाई सन्तानको संख्या हेरी ५०० रु. सम्म दण्ड गर्नु ।

**अवैध विवाह–निषेध र सजाय (५):** अबउपरउन्त अवैध विवाह गर्न हुँदैन । सो गर्ने गराउनेलाई अवस्था हेरी तीन महिनादेखि एक वर्षसम्म कैद नै हुन्छ र सो विवाह पनि विच्छेदित हुन्छ ।

५. **विवाहका अनिवार्य शर्तहरू–** दुईका बीचमा विवाह निम्नलिखित शर्त पूरा भएमा नै हुन सक्तछः–

(१) विवाहका निम्ति दुवैको स्वीकृति होस् ।

(२) दुवै पक्षमा कसैको  पति या पत्नी नहोस् ।

(३) दुवैमा कोई पनि विवाहको समयमा पागल, क्षयपीडित, कुष्टी, पक्षघात भएको र नपुंसक नहोस् ।

(४) वरको उमेर २१ वर्ष र कन्याको उमेर अठार १८ वर्षभन्दा कम नहोस् ।

(५) वर–वधू दुवै सपिण्ड र सगोत्री नहुन्; सपिण्ड र सगोत्रीमा कति पुस्ता बारने हो? यसको विचार प्रचलित व्यवहार अनुसार नै हुनेछ ।

६. **विवाह–कालको हदः** स्त्रीले ४५ वर्ष नाघेपछि र पुरूषले ५० वर्ष पुगेपछि विवाह गर्नु हुँदैन । यस ऐनको विरूद्ध चल्नेलाई रु.१००–सम्म न्यायाधीशका तजवीजले दण्ड हुन्छ ।

७. **वैवाहिक अधिकारको वापसी–** यदी पति–पत्नी एकसाथ बस्न चाहँदैनन् र विवाह विच्छेद गर्न पनि चाहँदैनन् भने उनीहरू अलग बस्ने प्रार्थना

न्यायालयसित गर्न सक्दछन् र त्यसको अनुमति निम्नलिखित कारणहरू भएमा न्यायालयले दिन सक्दछ । तर यस स्थितिमा उनीहरू कसैसित विवाह गर्न सक्दैनन्ः–

(१) यदि पति–पत्नी कुनै एकले दुई वर्षदेखि अर्कोलाई त्यागिदिएको छ भने;

(२) यदि दुवैदध्ये कुनै एकले यस्तो निर्दय व्यवहार गरेको छ कि सँग बस्दा दुवैमध्ये कुनै एकको वा दुवैको सुरक्षा असम्भव हुन्छ भने;

(३) यदि पति–पत्नीमध्ये कुनै एकको दिमाग खराब भएको छ भने;

(४) यदि दुवैमध्ये कसैलाई कुष्टरोग भएको छ भने;

(५) यदि पतिले उपपत्नी वा पत्नीले उपपति राखेकी छ वा वेश्यावृत्ति गर्दछे भने ।

८. **विवाह–विच्छेदका शर्तहरूः** कुनै पनि विवाह–चाहे त्यो कानून बन्नुभन्दा पहिलेको किन नहोस्–बदर गर्न सकिन्छ, यदि पति–पत्नीमध्ये कुनै एकले निम्नलिखत कारण वा कारणहरू पेश गर्न सक्दछ ः–

(१) पतिले उपपत्नी वा पत्नीले उपपति राखेको छ भने;

(२) पति–पत्नीमध्ये कुनै एकले धर्म  परिवर्तन गरेको छ भने;

(३) यदि दुवैमध्ये कुनै एकलाई कुष्ट भएको छ भने र तीन वर्षसम्म निको हुने सम्भावना देखिएको छैन भने;

(४) यदि दुवैमध्ये कुनै एकलाई पागलपनको बिमारी भएको छ र तीन वर्षसम्म पनि निको हुने सम्भावना देखिएको छैन भने;

(५) पति–पत्नीमध्ये कुनै एकको तीन वर्षदेखि पत्ता लागेको छैन भने;

(६) न्यायालयबाट वैवाहिक अधिकारको वापसी लिएको दुई वर्ष बितिसकेको छ भने ।

९. **दम्पतिको सम्पत्ति–अधिकार :** (१) विवाह भएपछि पति–पत्नी दुवैको सम्पत्तिमा बराबर अधिकार हुन्छ र पतिको स्वीकृतिबिना पत्नीले र पत्नीको स्वीकृतिबिना पतिले सम्पत्ति बेचिविखन गर्न पाउँदैन ।

(२) पति–पत्नी पृथक रहेका अवस्थामा सम्पत्तिको आयको वितरण दुवैमा बराबर हुनेछ ।

१०. **बालकहरूको संरक्षणको अधिकारः** छुट्टिएपछि वा विवाह–विच्छेद भएपछि उमेर नपुगेसम्म छोरा–छोरीहरू आमाको साथ रहेन छन् र उनीहरूको पालन–पोषण र पढाइको खर्च बाबुले भर्नु पर्नेछ ।

११. **दाइजो–निषेध र छोरीको अंशाधिकार–** (१) छोरीलाई दिने उपहार, जस्तै एक–दुई जोर लुगा–गहनाहरूसिवाय अरू कुनै किसिमको दाइजो लिनु–दिनु हुँदैन । दाइजो दिनेलाई तीन महिना र दाइजो लिनेलाई ६ माहिना कैद नै हुन्छ ।

(२) बाबु–आमाको सम्पत्तिमा छोरा–छोरी–दुवैको बराबर हक लाग्दछ । छोराको अभावमा छोरी नै बाबु–आमाको सम्पत्तिको पूर्ण उत्तराधिकारिणी हुन्छे, यदि छोराको पनि कोई उत्तराधिकारी छैन भने ।

(३) बाबु–आमाको अंश–भागजति आमा–बाबुको साथ रहने छोरा कै हुन्छ ।

१२. **विवाहमा फजूल खर्च रोक्नेः** विवाहमा २५ जवानभन्दा बढी जन्ती लैजान र ५०० रुपियाँभन्दा बढी खर्च गर्नु हुँदैन । यस ऐनको विरूद्ध आचरण गर्नेलाई रु. ५००–देखि ५०००–सम्म दण्ड हुन्छ ।

## उद्देश्य र कारणहरूको विवरण

विवाह भनेको जीवनको सबैभन्दा महत्त्वपूर्ण घटना हो । तर हाम्रो देशमा वैवाहिक व्यवस्था अत्यन्त दोषपूर्ण छ जसले महिलाहरूको गौरवमा धक्का पुऱ्याएको छ र समाजमा अनेक दुराचार फैली समाज र देशको नैतिक आधार नै खलबलिएकोछ ।

समाजको चारित्रिक स्तर ऊँचा उठाउन र बहुविवाह आदिद्वारा महिलाहरूउपर जुन अत्याचार–अन्याय भइरहेको छ त्यसलाई रोक्नु अत्यन्त आवश्यक भएकोले यो बिल यस सभाको समक्ष पेश गर्दछु ।

मिति २८ आश्विन २०११

तारादेवी शर्मा, कलैया, सल्लाहकार सभाको सदस्य